दर्ता नं. ८२७७
दर्ता मिति २०८०/०७/०५

श्री सर्वोच्च अदालतमा पेश गरिएको
पूरक निवेदन पत्र

रुक्शना कपाली .........................................................................................१ निवेदक

विरुद्ध

नेपाल सरकार मन्त्रीपरिषद् समेत .......................................................................१ विपक्षी

मुद्दा : उत्प्रेषण परमादेश समेत (०७७-WO-०९७३) ।

म निवेदक नियमानुसार लाग्ने निवेदन दस्तुर यसैसाथ संलग्न गरि निम्नलिखित निवेदन गर्दछु ।

१. मिति नेपाल संवत् ११४१ चौला १३ गते तदनुसार २०७७ चैत्र १८ गते मैले यस अदालतमा दायर गरेको यस रिट निवेदनमा गत झण्डै तीन वर्षको समयावधीमा विकसित केही नयाँ तथ्यहरू प्रस्तुत गर्न चाहेको हुनाले यो निवेदन पेश गर्दैछु ।

२. विषयवस्तुको कानूनी परिवेशमा प्रवेश गर्न अगावै यसको **अवधारणा तथा परिभाषामा** प्रवेश गर्न उपयुक्त होला ।

(क) कुनै शिशु जन्मेपश्चात् कतिपय अवस्थामा यौनाङ्गका आधारमा र कतिपय अवस्थामा अभिभावकको इच्छाका आधारमा निजलाई तत्काल बालक वा बालिका भनेर इङ्गित

मस्यौदाकार - निवेदक रुक्शना कपाली ।

गरिन्छ, जसलाई जन्मँदा इङ्गित गरिएको लैङ्गिकता (अङ्ग्रेजीमा : **Gender assigned at birth**) भनिन्छ । कुनै शिशु जन्मने बित्तिकै यसरी लैङ्गिकताको निर्धारण गर्दा शिशुको यौनाङ्ग हेरिन्छ जसानुसार **शिश्न (Penis)** भएमा केटा तथा **योनी (Vulva)** भएमा केटी भनी उसको लैङ्गिकताको निर्धारण गर्ने गरिन्छ । कतिपय अवस्थामा शिशुको यौनाङ्ग अस्पष्ट रहेको वा शिश्न र योनी दुबै यौनाङ्ग हुने हुन्छ । यस्तो अवस्थामा हाम्रो सामाजिक मूल्य मान्यता स्पष्ट छैन, निज शिशुका अभिभावकको चाहनाअनुसार केटा वा केटी भनी लैङ्गिकताको निर्धारण गर्ने गरिन्छ । यसरी निर्धारण गरिएको लैङ्गिकताअनुसार नै शिशुहरूलाई हुर्काइन्छ । त्यसरी शिशुको यौनाङ्ग शिश्न भएमा केटा भनी अनुमान गरिन्छ, जसलाई जन्मँदा पुलिङ्गी इङ्गित गरिएको (अङ्ग्रेजीमा : **Assigned male at birth**) व्यक्ति भनिन्छ भने शिशुको यौनाङ्ग योनी भएमा केटी भनी अनुमान गरिन्छ, जसलाई **जन्मँदा स्त्रीलिङ्गी इङ्गित गरिएको** (अङ्ग्रेजीमा : **Assigned female at birth**) व्यक्ति भनिन्छ ।

(ख) **लैङ्गिक पहिचान** (अङ्ग्रेजीमा : **Gender identity**) भन्नाले व्यक्तिको स्वःअनुभूतिको लैङ्गिकता हो । व्यक्तिको लैङ्गिकतासम्बन्धी व्यक्तिगत अनुभूति तथा अनुभव निजको लैङ्गिक पहिचान हो । यसलाई लैङ्गिक अन्तरबोधन (अङ्ग्रेजीमा : **Innate sense of gender**) पनि भन्ने गरिन्छ । कुनै पनि शिशु जन्मँदाका बखत आफ्नो लैङ्गिकताको सम्बन्धमा चेतनशील हुन असम्भव छ । लैङ्गिक पहिचान व्यक्ति हुर्कँदै जाने क्रममा निजले गर्ने आफ्नो लैङ्गिकताप्रतिको अनुभूतिबाट थाहा हुँदै जाने विषय हो । व्यक्तिको लैङ्गिक पहिचान जन्मनासाथ थाहा हुँदैन । जन्मनासाथ देखिने भनेको यौनाङ्ग मात्र हो, ती व्यक्तिको लैङ्गिक अनुभूती, आचरण वा अभिव्यक्ति त्यसरी भौतिक रूपमा देखिने विषय होइन । व्यक्ति हुर्कने बढ्ने क्रममा उसको लैङ्गिक आचरण तथा अभिव्यक्ति, हाउभाउ, चालढाल, आनिबानि लगायतका विषयहरूबाट दृश्यक हुने एवं नीज स्वयंलाई स्वःअनुभूती भई र स्वःविश्वस्त भएपछि मात्रै आफ्नो लैङ्गिक पहिचान निर्धारण गर्न सकिने हुन्छ ।

(ग) यसरी जन्मको बखत निर्धारण गरिदिएको लैङ्गिकता कतिपय व्यक्तिहरूका लागि मिल्छ अर्थात् ऊ हुर्कने बढ्ने क्रममा उसले स्वःअनुभूती गर्ने लैङ्गिकता पनि सोही अनुसार हुन्छ । ती व्यक्तिहरूलाई त्याचलैङ्गिक व्यक्ति (अङ्ग्रेजीमा : **Cisgender person**) भनिन्छ ।

कोही व्यक्तिलाई जन्मँदा पुरुष लैङ्गिकता इङ्गित गरिएको थियो तथा उसको लैङ्गिक पहिचान पनि पुरुष नै हुन्छ भने त्यस्ता पुरुषलाई त्याचलैङ्गिक पुरुष (अङ्ग्रेजीमा : **Cisgender male**) भनिन्छ । कोही व्यक्तिलाई जन्मँदा महिला लैङ्गिकता इङ्गित गरिएको थियो तथा उसको लैङ्गिक पहिचान पनि महिला नै हुन्छ भने त्यस्ता महिलालाई त्याचलैङ्गिक महिला (अङ्ग्रेजीमा : **Cisgender female**) भनिन्छ ।

(घ) तथापि यसरी जन्मको बखत निर्धारण गरिदिएको लैङ्गिकता सबै व्यक्तिहरूका लागि मिल्छ भन्ने छैन । कतिपय व्यक्तिहरूका लागि यो मिल्दैन अर्थात् ऊ हुर्कने बढ्ने क्रममा उसले स्वःअनुभूती गर्ने लैङ्गिकता सो भन्दा विपरीतको हुन्छ । ती व्यक्तिहरूलाई पारलैङ्गिक व्यक्ति (अङ्ग्रेजीमा : **Transgender person**) भनिन्छ । कोही व्यक्तिलाई जन्मँदा पुरुष लैङ्गिकता इङ्गित गरिएको थियो तथा उसको लैङ्गिक पहिचान महिला हुन्छ भने त्यस्ता महिलालाई **पारलैङ्गिक महिला** (अङ्ग्रेजीमा : **Transgender female**) भनिन्छ । कोही व्यक्तिलाई जन्मँदा महिला लैङ्गिकता इङ्गित गरिएको थियो तथा उसको लैङ्गिक पहिचान पुरुष हुन्छ भने त्यस्ता पुरुषलाई **पारलैङ्गिक पुरुष** (अङ्ग्रेजीमा : **Transgender male**) भनिन्छ ।

(ङ) **"त्याचलैङ्गिक"** तथा **"पारलैङ्गिक"** शब्दहरूले व्यक्तिको लैङ्गिक पहिचान उसको जन्मँदा इङ्गित गरिएको लैङ्गिकताको तुलनानुसार व्याख्या गर्दछ । पारलैङ्गिक महिला तथा त्याचलैङ्गिक महिला दुबै लैङ्गिक पहिचानका आधारमा महिला नै हुन् । तथापि उनीहरूको जन्मँदा इङ्गित गरिएको लैङ्गिकता फरक भए । त्यसै गरी पारलैङ्गिक पुरुष तथा त्याचलैङ्गिक पुरुष दुबै लैङ्गिक पहिचानका आधारमा पुरुष नै हुन् । तथापि उनीहरूको जन्मँदा इङ्गित गरिएको लैङ्गिकता फरक भए ।

(च) समाजको **समीभावी (normative)** मान्यता अनुसार समाजले **"महिला"** भनि चिनेका महिलाहरू त्याचलैङ्गिक महिलाहरू हुन् भने समाजले **"पुरुष"** भनि चिनेका पुरुषहरू त्याचलैङ्गिक पुरुषहरू हुन् । यहाँ **"त्याचलैङ्गिक"** शब्दको उत्पत्तिले पारलैङ्गिक व्यक्तिहरूको स्वीकार्यतामा महत्वपूर्ण भूमिका निर्वाह गर्दछ । **"त्याचलैङ्गिक"** शब्दको अभावमा यस्ता प्रकृतिका व्यक्तिले आफूलाई **"प्रमुख" वा "केन्द्रीय"** भनि चिनाउन पाउँथे

। यिनैलाई केन्द्रीय मानी हामी पारलैङ्गिक व्यक्तिहरूको व्याख्या विश्लेषण हुन्थ्यो । त्यसरी यिनैलाई केन्द्र मानी हाम्रो व्याख्या विश्लेषण हुँदा हामी सँधै **"अन्य" वा "अपवाद"** को उपमामा धकेलिन बाध्य हुन्छौं । त्यसै गरी **"त्याचलैङ्गिक"** शब्दको अभावमा त्यस प्रकृतिका मानिसहरूले आफूलाई **"सामान्य (normal)"** भनि व्याख्या गर्न पाउँथे । यसले हामी पारलैङ्गिक व्यक्तिहरूलाई **"असामान्य (abnormal)"** ठहर्याउने भयो । उदाहरणका लागि :- **"पारलैङ्गिक महिला तथा सामान्य महिला"** । यसरी सम्बोधन हुँदा त्याचलैङ्गिक व्यक्तिहरू मात्र सामान्य तथा हामी पारलैङ्गिक व्यक्तिहरू असमान्य भन्ने भाष्यलाई पुनरुत्पादन तथा संस्थागत गरेको हुन जान्छ । तसर्थ **"त्याचलैङ्गिक"** शब्दले यो विभेद विरुद्ध पारलैङ्गिक तथा त्याचलैङ्गिक व्यक्तिहरूको सामाजिक बुझाई तथा भाष्य निर्माणमा सामञ्जस्यता कायम गर्न महत्वपूर्ण भूमिका निर्वाह गर्दछ ।

(छ) कुनै समूहको बारेमा व्याख्या विश्लेषण हुनु मात्र पर्याप्त छैन । त्यसरी व्याख्या विश्लेषण वा परिभाषित गर्दा कुन दृष्टिकोणले हेरिन्छ भन्ने विषयले पनि महत्व राख्छ । त्याचलैङ्गिक व्यक्तिहरूलाई मात्र सामान्य मान्ने दृष्टिकोणले परिभाषित गर्दा हामी पारलैङ्गिक व्यक्तिहरू स्वतः अन्यकरण (othering) मा पर्छौं । यस्तो प्रकारको अन्यकृत बुझाई हामीले सरकारी निकायहरूबाट पनि महसुस गर्यौं । त्यसैले मिति २०७७ माघ २१ मा हामीले **"यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता) : आधारभूत अवधारणा"** शीर्षकको पुस्तक प्रकाशन गरी पारलैङ्गिक व्यक्तिहरू लगायत लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक व्यक्तिहरूको बारेमा व्याख्या विश्लेषण गर्यौं । यस पुस्तकलाई निवेदन साथ संलग्न गरिएको छ ।

३. आज भन्दा झण्डै २४ वर्ष अगाडी यल (पाटन) को एक परिवारमा मेरो जन्म भयो । जन्मका बेला मेरो यौनाङ्ग हेरी मेरो अभिभावकले मलाई पुरुषको परिचय दियो । घरमा जन्मेको सबैभन्दा जेठो "छोरा" र सबैभन्दा जेठो "नाति" को रूपमा मलाई हुर्काइयो । जसरी अरू बालबालिकाहरूको लालनपालन हुन्थ्यो, मेरो पनि त्यसरी नै भयो । म पनि अरू बालबालिका सरह नै हुर्कंदै गएँ । तर मेरो कानमा सँधै एउटा गुञ्जिन्थ्यो, "केटी जस्तो" । बाल्यावस्थाको सानो उमेरमा मलाई त्यसको अर्थ थहा थिएन । केटी जस्तो भन्नाले के हो, केटा जस्तो भन्नाले के हो भन्ने भिन्नताको भेउ मैले पाउन सकेको थिएन ।

आफ्नो अन्तरमनको बोधबाट निर्दिष्ट प्रस्तुतीकरणमा मेरो जीवन अघि बढिरह्यो । मलाई समाजले दिलाएको पहिचान "केटा", तर समाजकै अनुसार मैले गर्ने गतिविधी, हाउभाउ, आचरण तथा अभिव्यक्ति "केटी जस्तो" । त्यो बेला मेरो कपाल पनि लामो थियो । परम्परा अनुसार कुनै निश्चित उमेर नपुगेसम्म केटा मान्छेले कपाल काट्न नहुने मान्यता थियो । त्यसैले लामो कपालमा दिदीहरूसँग, चमा (आमाको बहिनी) हरूसँग थरीथरीको चुल्थी बाँध्ने, थरीथरीको किलिप लगाउने गर्थें । साउन महिनामा आमा दिदी हजुरआमा सबैले लँय्चा (मेहेन्दी) लगाउँदा आफू पनि तम्सी तम्सी लगाइदेउ भन्दै हात दिने गर्थें । हातभरी चुरी लगाएर छमछम बजाउँदै हिंड्दाको रहर हर्ष अझै पनि याद छ । विद्यालयबाट फर्कन बित्तिकै जिजि (फुपू) को हील जुत्ता लगाउँदै "I am Lalita Miss" भन्दै ऊ बेला मलाई पढाउनु हुने एक शिक्षिकाको नक्कल गर्दै बस्ने गरेको याद छ । हजुरआमाको पर्सिकापः (साडीको टुक्रा) बेरेर बस्ने, बुबालाई जामा सिलाइदिन भन्ने, कहिले टेलिभिजनमा आएको सोनपरी बनेर खेल्ने, कहिले यल (पाटन) मा हुने गं प्याखं (अष्टमातृका नाच) का देवीहरू बनेर नृत्य गर्ने, फाल्गुनी पाठकको गीतहरूमा छमछमी नाच्ने, कम्मर मर्काउन आएन भनेर कम्मर मर्काइदेउ भनेर जिद्दी गर्ने लगायत मेरो बाल्यकाल यसरी नै चल्दै थियो । शायद त्यो बेलामा म सानै थिएँ भनेर कसैको रोकतोक भएन । उनीहरूको नजरमा यो केवल बाल्यकालको रहर हो भन्नेसम्म मात्र थियो होला । तर ठूलो हुँदै गएपछी पनि यसरी नै "केटी जस्तो" व्यवहार गर्न नछाडे पछी मलाई व्यापक अवरोधहरू आउन थाले । विद्यालयको "अनुशासन" अनुसार केटाहरूले कपाल काट्न पर्छ भनेर लामो कपाल काटेर छोटो बनाए । अब चुल्थी बाँध्दै किलिप लगाउन सम्भव भएन । ठूलो हुँदै गएपछी "केटीको लुगा" लगायो भने लाज हुन्छ भनेर रोकतोक आउन थाल्यो । तब मलाई बिस्तारी महसुस हुन थाल्यो, "म आफूलाई जसरी हेर्छु, मलाई समाजले त्यसरी नहेर्ने रहेछ" । उमेर बढ्दै गएपछी लैङ्गिकता सम्बन्धी यो द्वन्द्व चर्कँदै गयो । लुगा लगाउन बन्द गर्न सकिएला, सृङ्गार गर्न बन्द गर्न सकिएला तर आफ्नो प्रकृति प्रदत्त हाउभाउ तथा अभिव्यक्ति त आफूले चाहेर पनि रोकिदैनथ्यो । सानो उमेरमा केटा केटी भन्ने मतलब हुँदैनथ्यो । उमेर बढ्दै गएपछी बिस्तारी केटा र केटी छुटिन्न थाले । कक्षा ६ पढ्दै गर्दाको सम्झना हो, बिस्तारी मेरो आनिबाबी "केटी जस्तो" छ भनेर सँगै पढ्ने साथीभाइहरूले पनि नोटिस गर्न थाले । त्यसपछी गिज्याउने चिढाउने सिलसिला सुरु भयो । हिंड्यो भने पनि कस्तो केटी जस्तो हिंडेको, बोल्यो भने पनि कस्तो

केटी जस्तो बोलेको, खायो भने पनि कस्तो केटी जस्तो खाएको लगायत यावत् टिक्काटिप्पणीको सुरुवात भयो । समाजमा पुरुषकै रूपमा रहन बस्न परेपनि मेरो अन्तरबोधनबाट प्रकट हुने अभिव्यक्ति तथा बाह्य प्रस्तुतिकरण परिवर्तन हुने कुरा भएन । अब म पनि यही समाजकै उपज हो । म जसरी सामाजिकरण भएँ, मैले सिक्ने मूल्यमान्यता पनि त्यही हो । मलाई समाजले यस्तो महिला जस्तो व्यवहार नदेखाउ, यो समान्य होइन भन्न थालेपछी मलाई पनि त्यस्तै हो कि जस्तो लाग्न थाल्यो । कक्षा ७ पढ्दाको समय हो, मैले आफू माथी अंकुश लगाउँदै जान थालें । म हिंडेको देख्यो भने केटी जस्तै हिंड्यो भन्ने टिप्पणी आउँथ्यो, त्यसैले अरूले नदेख्ने बेला हिंड्न थालें । विद्यालयबाट छुट्टी भएपछी अलिक ढीला निस्किन, किनभने त्यति बेलासम्म अरू विद्यार्थी गइसकेका हुन्छन् र म आरामले हिंडा कसैलें टिप्पनी गर्न पाउने भएनन् । विद्यालयमा ब्रेक हुँदा शौचालय गयो भने सबैले देख्ने अनि केटी जस्तो हिंड्यो भनेर टिप्पणी गर्ने भए बरू कक्षा चलिरहेको बीचमा अनुमती मागी शौचालय गएँ भने त्यसबाट बचिन्छ । कम बोल्दै आफूलाई अरूबाट अलग्याउन थालें । आफूआफैमा रमाउन थालें । यसरी बिस्तारी अरूको टिक्काटिप्पणीबाट बच्न मैले अनेकौं जुक्ती लगाउन पर्यो । यसरी नै प्रत्येक दिन कसैले आफ्नो लैङ्गिक अभिव्यक्ति बारे टिकाटिप्पणी गर्लान् कि भन्ने नै डरभयमा म जीवन निर्वाह गर्दै थिएँ । यसैमा कक्षा ८ पुगियो । त्यस ताका एउटा समाचार निकै नै लोकप्रिय भएको थियो । पत्रपत्रिकाको हेडलाइनमा ठूला-ठूला अक्षरले "सन्तोष पन्तको छोरा अब छोरी" जस्ता समाचारहरू प्रकाशन हुन थाले । त्यस्तै एउटा समाचारको अध्ययन गर्न पुगें । मलाई अझै पनि स्मरण छ त्यो समाचार तथा अन्तरवार्ता पढ्दै गर्दा मेरो मनमा उत्पन्न भएका तीव्र भावनाहरू । मैले पहिलो पटक आफूले अनुभूती गरेको विषयको validation पाएजस्तो महसुस भयो । त्यही मैले पहिलो पटक सुनेको शब्द थियो transgender । यो भन्दा अगाडी मैले म जस्ता लैङ्गिक अनुभूती अभिव्यक्ति भएका व्यक्तिहरूलाई प्रयोग हुने अवहेलनापूर्ण शब्द बाहेक अरू कुनै पनि शब्द सुनेको थिएन । पहिलो पटक यो "नयाँ" शब्द सुन्दा मनमा कौतुहलता पनि जाग्यो । तर मैले यस बारे कहाँ कता सूचना जानकारी पाउन सक्छु भन्ने बारे मलाई थहा थिएन । अहिले जस्तो हातहातमा मोबाइल र घरघरमा वाइफाइको युग पनि थिएन । मङ्गलबजारमा भाइ देगःको पछाडी एउटा साइबर थियो । त्यस साइबरमा पनि एउटा कुन्नाको कम्प्युटर गोप्य तवरले चलाउन मिल्थ्यो । त्यही कम्प्युटरमा पालो कुर्दै बस्थें । पहिलो पटक गुगलमा गई

transgender भनेर खोजें । बिस्तारी लेखहरू पढ्दै गएँ । दिन पछी दिन गर्दै मैले आफूलाई LGBTIQ+ बारे जानकार बनाउँदै गएँ । अब आफू जानकार त भइयो तर यो विषयसँग सुरमा त आफैले deal गर्न सकिएन । सर्वप्रथम त आफूले आफैलाई स्वीकार्न समय लाग्यो । यही समाजमा हुर्केबढेको म आफैले पनि समाजले सिकाएको मान्यताहरू unlearn गर्न समय लाग्यो । तर मैले बिस्तारी सोच्न थालें, मैले अहिलेकै समयमा बोलिनँ भने म सँधैको लागि मौन रहन तयार हुनुपर्छ । मैले आफ्नो भविष्यलाई कुण्ठित रूपले हेर्न सकिनँ । आफू कुण्ठित जीवन निर्वाह गर्नुपर्ने अवस्थाको परिकल्पना गर्न सकिनँ । त्यसैले म अब आफ्नो पहिचान अनुसार नै खुलेर आउँछु भन्ने निर्णय लिएँ । मैले बिस्तारी एक गर्दै अर्को समूहलाई आफ्नो पहिचान बारे खुलाउन थालें । मैले आफूले प्रयोग गर्न चाहेको नामको छनोट गरें । अनेकौं सोचबिचार पछी "रुक्शना" राख्ने निर्धो भएको हो । फेसबुकमा नाम फेरिदिएँ । कक्षा ९ पढ्दै गर्दा आफ्नो हजुरबुबाको जन्मदिनमा एउटा पँहेलो टि-सर्ट तथा नीलो सुरुवाल लगाएर म कोठा बाहिर निस्कें । त्यही मेरो coming out को कदम थियो । सुरुवाती समयमा रत्तीभर पनि सरल थिएन । मैले केकति कोकोबाट मात्र सुन्नुपरेन । ती सबैको जिकिर गरिरहँदा साध्य नै छैन । अरू भन्दा त आफ्नै आमा बुबासँग लड्नुपर्ने अवस्था निकै कठित थियो । म सम्झन पनि चाहन्नँ तर मेरो बुबाले १/२ वर्ष सम्म त मेरो मुख पनि हेरेन । मलाई सबैभन्दा सुरुमा स्वीकार्ने मेरो आमा हो । मैले घरपरिवार आफन्त तथा नातेदारहरूबाट भोग्नुपरेको दुर्व्यवहार तथा पीडाको आफ्नै छुट्टै बृत्तान्त बन्ला । मैले विद्यालय जीवनमा विद्यालयमा प्रशासन तथा अरू विद्यार्थीबाट भोग्नुपरेको पीडाको पनि आफ्नै छुट्टै बृतान्त बन्ला । तर आजको मितिसम्म आउँदा मेरो परिवारमा मलाई स्वीकार्यता मात्र नभएर उनीहरू मेरो हकमा लड्न पनि तयार भएको अवस्था छ । मेरो आमा बुबाले आजको मितिमा आफन्तहरू माझ मेरो प्रतिरक्षा गर्दै आएको समेत अवस्था छ । नेपाली समाजको विडम्बना, आफूलाई जतिसुकै नराम्रो भन्ने मान्ने मान्छेहरूलाई पनि completely ignore गर्न सक्ने हुँदैन । अझै पनि केही न केही अवशरमा भेट भइरहेको हुन्छ । तर आजको मितिमा मेरो परिवार मेरो साथमा छ भन्ने विषयमा नै गौरव लाग्छ । यसरी समाजमा आफ्नो लैङ्गिक पहिचान अनुसार खुलेर आएको पनि झण्डै १० वर्ष भएको छ ।

४. मसँग हालसम्म देहायका कागजातहरू छन् । ती कागजातहरूमा लैङ्गिक पहिचान कायम हुने अवस्था देहाय बमोजिम रहेको छ ।

(क) <u>मृतनाम तथा लैङ्गिक विवरणमा "पुरुष" रहेको ।</u>

(१) इडेन गार्डेन आवसीय माध्यमिक विद्यालयमा रहेको अभिलेख ।[१]

(२) कक्षा १० का प्रमाणपत्र (लब्धांक पत्र, परीक्षा प्रमाणपत्र तथा चारित्रिक प्रमाणपत्र) ।[२]

(ख) <u>नाम रुक्शना तथा लैङ्गिक विवरणमा "अन्य" रहेको ।</u>

(३) जन्म दर्ता प्रमाणपत्र ।[३]

(४) कक्षा ८ को प्रमाणपत्र ।[४]

(५) नागरिकता प्रमाणपत्र ।[५]

(ग) <u>नाम रुक्शना तथा लैङ्गिक विवरणमा "महिला" रहेको ।</u>

(६) कक्षा ११ तथा १२ प्रमाणपत्रहरू ।[६]

(७) राहदानी ।[७]

(८) स्थायी लेखा नम्बर कार्ड ।[८]

(९) मतदाता परिचयपत्र ।[९]

---

[1] हालसम्म कुनै संशोधन नभएको ।

[2] हालसम्म कुनै संशोधन नभएको ।

[3] सुरु जारी हुँदा मृतनाम तथा लैङ्गिकता पुरुष । संशोधन माग गर्दा नागरिकताका आधारमा नाम रुक्शना तथा लैङ्गिकता अन्य कायम भएको ।

[4] सुरु जारी हुँदा मृतनाम तथा लैङ्गिकता पुरुष । संशोधन माग गर्दा नागरिकताका आधारमा नाम रुक्शना तथा लैङ्गिकता अन्य कायम भएको ।

[5] सुरु जारी हुँदा नै नाम रुक्शना पाएको तर लैङ्गिकता अन्य राखिदिएको ।

[6] सुरु जारी हुँदा नै नाम रुक्शना तथा लैङ्गिकता महिलामा प्राप्त भएको ।

[7] पहिलो राहदानीमा महिला कायम भएको । दोस्रो राहदानीमा अन्य उल्लेख भएको । रिट नं ०७८-WO-०९९९ को अन्तरिम आदेश बमोजिम पुनः महिला कायम भएको ।

[8] सुरु जारी हुँदा नै नाम रुक्शना तथा लैङ्गिकता महिलामा प्राप्त भएको ।

(१०) कोभिड-१९ खोप कार्ड ।[10]

(११) अपाङ्गता परिचयपत्र ।[11]

(१२) राष्ट्रिय परिचयपत्र ।[12]

(१३) आदिवासी जनजाती प्रमाणपत्र ।[13]

५. त्यसै गरी रिट निवेदन दायर गर्दाका बखत म त्रिभुवन विश्वविद्यालयको आङ्गिक क्याम्पस त्रि-चन्द्र बहुमुखी क्याम्पसमा ३ वर्षे बि.ए. मा भर्ना भई प्रथम वर्षको परीक्षा दिइसकेको अवस्थामा थिएँ भने हाल मेरो तीनै वर्षको परीक्षा सम्पात भई सबै परीक्षामा उत्तीर्ण भइसकेको अवस्थामा छु । तथापि हालसम्म पनि मेरो विश्वविद्यालय रजिष्ट्रेशन नम्बर प्राप्त हुन सकेको छैन । विश्वविद्यालय रजिष्ट्रेशन नम्बर बिना मैले Academic Transcript प्राप्त गर्न नसक्ने भएकाले मेरो शैक्षिक उपधीको कुनै आधिकारिकता छैन । २०७४ को भर्नाले २०७७ मा ३ वर्षे स्नातक तहको अवधी सकाइसकेपछीसम्म पनि मेरो रजिष्ट्रेशन सम्बन्धीको समस्या टुङ्गो नलाग्दा मेरो समग्र मानसिक स्वास्थ्यमा नै गम्भीर प्रतिकूल असर पुगेको सम्मको अवस्थामा आफूले भोगिरहेको यस समस्यामा अझै प्रभावकारी पहल गर्न एवं आफू जस्तै अन्य पारलैङ्गिक व्यक्तिहरूलाई पनि सहयोग गर्नका लागि मैले कानून विषय पढ्ने निर्णय गरें । त्रि.वि.मा यसै पनि रजिष्ट्रेशन नपाएको अवस्थामा पुनः कानून संकायमा पनि यही समस्या दोहोरिने बल्झिने अवस्था भएको हुनाले मैले पूर्वाञ्चल विश्वविद्यालयको आङ्गिक क्याम्पस चक्रबर्ती हबि एजुकेशन एकाडेमि, बिजुलीबजार, काठमाडौंमा २०७७/७८ सालमा भर्ना भई ५ वर्षे बिए एल.एल.बि. अध्ययन गर्न थालें । तर पूर्वाञ्चल विश्वविद्यालयमा पनि यही समस्या दोहोरियो । यस्तो भएपछी म घरको न घाटको महसुस हुन बाध्य भएँ । त्रि.वि.ले पनि रजिष्ट्रेशन दिएन, पू.वि.ले पनि रजिष्ट्रेशन दिएन । म दुबै विश्वविद्यालयमा आधिकारिक रूपमा दर्ता भइनँ । यसले मेरो तत्

[9] सुरु जारी हुँदा "तेस्रोलिङ्गी" उल्लेख भएकोमा रिट नं ०७७-WO-१२४४ को अन्तरिम आदेश बमोजिम संशोधन भएर "महिला" कायम भएको ।

[10] रिट नं ०७८-WO-०८४७ को अन्तरिम आदेश बमोजिम महिला कायम भएको ।

[11] सुरु जारी हुँदा नै नाम रुक्शना तथा लैङ्गिकता महिलामा प्राप्त भएको ।

[12] सुरु जारी हुँदा नै नाम रुक्शना तथा लैङ्गिकता महिलामा प्राप्त भएको ।

[13] सुरु जारी हुँदा नै नाम रुक्शना तथा लैङ्गिकता महिलामा प्राप्त भएको ।

विश्वविद्यालयमा अध्ययन गरिरहेको शैक्षिक उपाधीमा मात्र नभएर मेरो समग्र शैक्षिक भविष्य तथा रोजगारीको अवशर जस्ता विषयलाई पनि अन्योलताको अवस्थामा धकेलिदियो । दुबै विश्वविद्यालयबाट आधिकारिक मान्यता नपाएको भएर मैले शैक्षिक पात्र अनुसार गर्नुपर्ने सम्पूर्ण दायित्व निर्वाह गरिरहें । मैले त्रि.वि.मा ३ वर्षे स्नातकको सबै बाँकी परीक्षा दिएँ । म सबैमा उत्तीर्ण पनि भएँ । यद्यपि मेरो त्रि.वि. शैक्षिक उपाधीको हैसियत के हुने ? मेरो शैक्षिक उपाधीको आधिकारिकता के हुने ? यस विषयमा म अन्धकारमै छु । म एउटा भविष्यविहीन जीवन निर्वाह गर्न बाध्य भएको छु ।

६. **<u>मूल निवेदन (रिट निवेदन) को मागदाबी अनुसार प्रकरण १० को (क) मागदाबी :</u>** उल्लेखित मागदाबी मेरो गोपनीयताको हकसँग सम्बन्धित संवेदनशील विषय हो । **अधिवक्ता बाबुराम अर्यालसमेत वि. नेपाल सरकार समेत** (रिट नं ०६९-WO-०२६८, फैसला मिति : २०७२।१०।२१, निर्णय नं. ९७४०, भाग : ५९, साल : २०७४, महिना : बैशाख, अंक : १) मा यस अदालतबाट गोपनीयताको हक सम्बन्धी प्रतिपादित नजीर स्मरणग्राह्य छ । *"गोपनीयताको हक व्यक्तिको नितान्त गोप्य र नैसर्गिक अधिकार हो । व्यक्तिको निजी काम कारवाही र गतिविधिहरूमा अनावश्यकरूपमा सरकार तथा तेस्रो पत्रबाट हस्तक्षेप नहुने प्रत्याभूति आधुनिक युगको गोपनीयताको हकको मुख्य उद्देश्य र विषय हो । गोपनीयता कुनै पनि व्यक्तिको एक्लै रहन पाउने अधिकार हो । अर्थात् Right to be let alone भन्ने सँग सम्बन्धित छ । कुनै पनि व्यक्तिको जीवनमा सरकार तथा अन्य पक्षबाट हुने हस्तक्षेपलाई यसले पूर्णतः नकार्ने ।"* मैले आफ्नो लैङ्गिक पहिचानलाई स्वतन्त्र भई व्यक्त गर्न सक्नु अगावै मलाई दिइएको परिचयं मेरो नितान्त वैयक्तिक विषय हो । त्यसै गरी **अधिवक्ता ऋषिराम घिमिरे समेत वि. प्रधानमन्त्री तथा मन्त्रिपरिषद्को कार्यालय समेत** (संवत् २०६३ सालको रिट नं. ०२८७, फैसला मिति : २०६६/०१/३०, निर्णय नं. ८७०३, भाग : ५३, साल : २०६८, महिना : माघ, अंक : १०) मा यस अदालतबाट प्रतिपादित सिद्धान्त पनि महत्वपूर्ण छ । *"व्यक्तिका कतिपय गोप्य कुराहरू अन्य व्यक्तिले थाहा पाएको अवस्थामा थाहा पाउने व्यक्तिले अर्को व्यक्तिलाई नियन्त्रणमा राख्न सक्ने हुन्छ । यसको परिणामस्वरुप व्यक्तिगत सूचना प्रवाह हुने व्यक्तिको व्यक्तिगत स्वतन्त्रतामा नै आघात पुग्न जाने हुन्छ । त्यसकारण व्यक्तिको व्यक्तिगत स्वतन्त्रताको रक्षाको लागि निजको गोपनीयता सम्बन्धी अधिकारको संरक्षण गर्नुपर्ने ।"* तसर्थ पारलैङ्गिक व्यक्तिहरूले

आफ्नो लैङ्गिक पहिचान अनुसार समाजमा आफ्नो पहिचान स्थापित गर्न सक्ने सामर्थ्य हुन पूर्वका वैयक्तिक लैङ्गिक इतिहासका, विवरणहरू यसरी संवेदनशील छन् । नेपालको संविधान, धारा २८ द्वारा मौलिक हकका रूपमा गोपनीयताको हक सुनिश्चित छ । वैयक्तिक गोपनीयता सम्बन्धी ऐन, २०७५ को दफा ३ (३) ले लैङ्गिक पहिचान जस्ता विषयको गोपनीयता कायम राख्ने अधिकार दिलाएको खण्डमा वैयक्तिक लैङ्गिक इतिहासमा गोपनीयता नहुने प्रश्न नै उठ्दैन । त्यसै गरी ऐनको दफा ११ बमोजिम वैयक्तिक लिखतहरूको समेत कानूनी अधिकार प्रत्याभूत गराएको अवस्था छ । धारा २८ को गोपनीयताको हक तथा धारा १६ को सम्मानपूर्वक बाँच्न पाउने हकको तादाम्य सम्बन्ध छ । व्यक्तिको वैयक्तिक लैङ्गिक इतिहासमा गोपनीयता कायम हुन नसक्दा यसले समाजमा नीजको परिचयमा द्विविधात्मक वातावरण सृजना गर्दछ भने कानूनी रूपमा लैङ्गिक पहिचान अनुसारको विवरण कायम भइसकेपछी पनि पूर्ववत् विवरणको सम्प्रेषणलाई निरन्तरता दिलाइरहन्छ, जसकारण पारलैङ्गिक व्यक्तिहरूले आफ्नो लैङ्गिक पहिचान अनुसार निर्वाध जीवनयापन गर्नबाट वञ्चित गराउँछ ।

७. <u>मूल निवेदन (रिट निवेदन) को मागदाबी अनुसार प्रकरण १० को (ख) मागदाबी :</u> उल्लेखित मागदाबी अदालती प्रक्रियामा पारलैङ्गिक व्यक्तिहरूप्रति संवेदनशीलता तथा मैत्रीपूर्णताको सुनिश्चित गर्नका लागि महत्वपूर्ण रहन्छ । मिसिल साथ संलग्न मिति २०७७ माघ २१ मा प्रकाशित ISBN: 978-9937-0-8469-7 रहेको पुस्तक शीर्षक **"यौन अभिमुखिकरण, लैङ्गिक पहिचान तथा यौन विशेषता (यौभिकयौता) : आधारभूत अवधारणा"** मा मृतनामलाई देहाय अनुसार परिभाषित व्याख्या गरिएको छ । *"प्रत्येक व्यक्ति जन्मने बित्तिकै उसलाई उसका अभिभावक / संरक्षकद्वारा एउटा नाम दिइन्छ । नेपालका अधिकांश समाजहरूमा व्यक्तिको नाम लैङ्गिकता-युक्त (gendered) हुन्छ । ती सामाजिक परिवेशमा व्यक्तिको नामबाट पनि उसको लैङ्गिकता चिनिन्छ । त्यसैले पारलैङ्गिक व्यक्तिहरू लगायत विविध लैङ्गिक पहिचानका व्यक्तिहरूले आफ्नो स्वःअनुभूतीको लैङ्गिक पहिचान अनुसार जीवनयापन गर्न र चिनाउन सुरु गरिसकेपछि आफूलाई शिशु आवस्थामा दिइएको नामले उनीहरूको लैङ्गिक पहिचानलाई सही प्रतिनिधित्व गर्न नसकेमा त्यस नामबाट चिनिन वा चिनाउन नचाहने हुन सक्छन् । यस्तो अवस्थामा व्यक्तिले आफ्नो लैङ्गिक पहिचानको सही प्रतिनिधित्व गर्ने नाम छनोट र प्रयोग गर्न चाहन्छन् । अतः त्यसरी व्यक्तिले आफ्नो लैङ्गिक पहिचानको सही प्रतिनिधित्व गर्ने नाम छनोट गरिसकेपछि आफूलाई शिशु अवस्थामा राखिदिएको नाम त्याग्छन् र त्यही त्यागिएको नामलाई मृतनाम (अङ्ग्रेजीमाः **Deadname**) भनिन्छ । अधिकांश पारलैङ्गिक व्यक्तिहरूका लागि मृतनाम*

भन्नाले बितिसकेको समय, पहिचान विपरीतको परिचय भएकाले मृतनामबाट सम्बोधित हुने कुरा अपमानको विषय हुन्छ । कतिपय पारलैङ्गिक व्यक्तिहरूको स्वःअनुभूती अनुसारको लैङ्गिक पहिचानमा जीवनयापन गर्नु अघिको जीवनकालमा त्रासमय, यातनापूर्ण र अपमानजनक अनुभवहरू हुन सक्छन् । ती व्यक्तिहरूलाई मृतनामको प्रयोग र सम्बोधनले पुनःआघात (re-traumatize) गर्न सक्छ । कुनै पनि व्यक्तिलाई उसको मृतनामले सम्बोधन गर्नु उसको अस्तित्वलाई नै नकार्नु र उसले आफूलाई स्थापित गर्न चाहेको परिचय एवं पहिचानबाट निषेध गर्नु हो । त्यसैगरि कुनै पनि व्यक्तिको इच्छा विरुद्ध वा सहमति नलिई मृतनाम सार्वजनिक गरिनु निजको गोपनीयताको अधिकारको उल्लंघनका साथसाथै त्यस्तो कार्यले व्यक्तिको सामाजिक स्वीकार्यता एवं सामाजिक-मनोवैज्ञानिक स्वास्थ्यमा नै प्रतिकूल प्रभाव पार्दछ । यसका साथै कुनैपनि व्यक्तिलाई उसको इच्छा विपरीत वा असहमति हुँदाहुँदै मृतनामबाट सम्बोधन गर्ने वा लिखित, मौखिक एवं साङ्केतिक रुपमा प्रयोग गर्ने कार्य लैङ्गिक हिंसा अन्तरगत पर्दछ ।" हाम्रो सामाजिक परिवेशमा नामले लैङ्गिकता जनाउने भएपछी जन्मँदा इङ्गित गरिएको लैङ्गिकता अनुसार राखिएको नाम प्रति अपनत्व महसुस नहुनु, आफ्नो परिचयसँग असम्बन्धता महसुस हुनु र आफ्नो लैङ्गिक पहिचान अनुसारकै नाम छनोट गरी प्रयोग गर्न चाहनु स्वभाविकै हो । हामीलाई त्यस नामले सम्बोधन गर्दा पीडा हुन्छ । हाम्रो लैङ्गिक पहिचान स्वीकारोक्ती नभएको र हामीलाई जन्मँदा इङ्गित लैङ्गिकतामा हुत्याइदिएको अनुभूती हुन्छ । त्यो नाम राखिनुमा हाम्रो निर्णय थिएन, त्यसैले त्यस्ता शब्दलाई हाम्रो नाम भनेर भिराइँदा हामी आफ्नो लैङ्गिक पहिचान स्थापित गर्नबाट वञ्चित भएका छौं । लैङ्गिक पहिचान विपरीतको नामलाई स्वीकार्न बाध्य पार्नु हाम्रो लैङ्गिक पहिचानलाई नकार्नु हो । व्यक्तिको अस्तित्व तथा आत्मस्वीकारोक्तीसँग सम्बन्धित विषय भएकाले व्यक्तिले आफ्नो लैङ्गिक पहिचान अनुसार चिनाउन चाहेको नाम प्रयोग नहुँदा अदालती प्रक्रिया पनि अमैत्रीपूर्ण एवं असंवेदनशील भई यसले दीर्घकालीनतः पारलैङ्गिक व्यक्तिहरूप्रति अदालती प्रक्रिया अवलम्बन गर्नमा त्रासको वातावरण सृजना गरिदिन्छ । अरू सबै ठाउँबाट अन्याय भइरहेको अवस्थामा न्यायको लागि गुहार्न आउने अदालत जस्तो संवेदनशीलपूर्ण स्थान नै पारलैङ्गिक व्यक्तिहरूको लागि मैत्रीपूर्ण भएन भने यसपछीका अन्य पारलैङ्गिक व्यक्तिहरू अदालत प्रवेश गर्नै डराउँछन् वा डराउनु पर्ने स्थिति बन्छ । अदालतले नै मेरो गोपनीयतालाई सम्मान नगर्ने, अदालतले नै मेरो आत्मसम्मानलाई नबुझिदिने अवस्थामा म अदालतमा पाइला टेक्न डराउनुपर्ने अवस्था हुन्छ । पारलैङ्गिक व्यक्तिहरू आफूले चाहेको पहिचानको प्रतिकूल आफ्नो अपनत्व नै नभएको परिचयलाई प्राविधिकता मात्रको आधारले आफूसँग जोडिराख्न बाध्य पार्दा यसले संविधान

प्रदत्त सम्मानपूर्वक बाँच्न पाउने हकको निरन्तर हनन भइरहन्छ । पारलैङ्गिक व्यक्तिहरूले अदालतमा मुद्दा दायर गर्न पाउनु तथा प्रक्रियामा सामेल हुन पाउनु मात्र न्यायमा समान पहुँच सुनिश्चित हुँदैन । अदालती प्रक्रियामा पारलैङ्गिक व्यक्तिहरू विशेष संवेदलशीलता तथा मैत्रीपूर्णताका उपाय उपकरण अवलम्बन गरिएन भने यसले पारलैङ्गिक व्यक्तिहरूको पहुँचलाई पनि न्यूनिकरण गर्दछ । तसर्थ नेपालको संविधान धारा १६ द्वारा मौलिक हकका रूपमा प्रत्याभूत भएको हकको सवालमा यो महत्वपूर्ण विषय हो ।

८. **मूल निवेदन (रिट निवेदन) को मागदाबी अनुसार प्रकरण १० को (ग) मागदाबी :** उल्लेखित मागदाबी नेपालको संविधान, धारा ३१ द्वारा प्रदत्त शिक्षा सम्बन्धी हक एवं त्यसैसँग गाँसिएर धारा ३३ द्वारा प्रदत्त रोजगारीको हकसँग सम्बन्धित विषय रहेको छ । कुनै पनि मानसिकको बौद्धिक क्षमता उसको लैङ्गिक पहिचानसँग कसरी सम्बन्धित हुन्छ ? कसैको बौद्धिक क्षमता एवं प्राज्ञिक दक्षतामा लैङ्गिक पहिचान कसरी बाधक हुन्छ ? प्राविधिक असुविधा देखाएर मानिसलाई लैङ्गिक पहिचानको आधारमा शिक्षा आर्जन गर्नबाट वञ्चित गर्ने कार्यले हाम्रो संविधानकै मजाक बनाएको छ । यही लैङ्गिक पहिचानको कारणले मैले प्रत्यर्थी त्रिभुवन विश्वविद्यालयमा पूरा गरेको शैक्षिक उपाधीको आधिकारिक मान्यता नहुने अवस्था एवं मेरो शैक्षिक भविष्यलाई नै अन्योलतामा धकेलेको हुनाले मेरो संविधान प्रदत्त मौलिक हकको गम्भीर हनन भएको अवस्था छ । विश्वविद्यालयले ३ वर्षसम्म पनि मौखिक आश्वासन मात्र दिएर मेरो "समस्या" लाई समाधान गर्न तर्फ कुनै पनि कार्य गरेन । यसरी प्राविधिकताकै आधारमा पारलैङ्गिक व्यक्तिहरू शिक्षाबाट वञ्चित हुने अवस्था रहिरहने हो भने यसले हाम्रो देशको शैक्षिक प्रणालीमै गम्भीर प्रश्न खडा गरिदिन्छ । समाजमा परिवर्तन ल्याई न्याय सुशासन स्थापना गरी समाजमा दक्ष जनशक्तिको उत्पादन गर्नका लागि विविध विधाहरूको अध्ययन अध्यापन गराउने विश्वविद्यालयको प्रशासन स्वयं नै लैङ्गिक मैत्री हुन नसक्नु विडम्बनापूर्ण मात्र नभएर गम्भीर चिन्तनको विषय पनि हो । व्यङ्ग्य अझै लैङ्गिकता अध्ययन (Gender Studies) को प्राज्ञिक अध्ययन अध्यापन गराउने नेतृत्वदायी तथा नेपालमा एक मात्र संस्था नै त्रिभुवन विश्वविद्यालय रहेको छ । नेपाल भन्दा "गुणस्तरीय" शिक्षाको खोजीमा लाखौं युवाहरू देशबाट बाहिरिएको अवस्थामा आफ्नै देशमा अध्ययन गर्न चाहेको, आफ्नै देशमा केही गर्न चाहेको युवाहरूलाई नानाथरीका

प्राविधिकताको जटिलतामा अल्झाएर लैङ्गिक पहिचानको आधारमा शिक्षा हासिल गर्नबाट इन्कार गर्ने कार्य कहाँसम्मको अन्याय हो !

९. <u>मूल निवेदन (रिट निवेदन) को मागदाबी अनुसार प्रकरण १० को (घ) मागदाबी :</u> उल्लेखित मागदाबी नेपालको संविधान धारा १६ बमोजिम सम्मानपूर्वक बाँच्न पाउने हक एवं धारा १८ बमोजिम समानताको हकको रोहमा संवेदनशील विषय हो । कक्षा १० को शैक्षिक प्रमाणपत्रमा लैङ्गिक पहिचान कायम नहुँदा सो प्रमाणपत्र पेश गरी सेवा लिनुपर्ने जुनसुकै स्थानमा पनि मैले बाधा, अवरोध तथा अंकुशको समाना गर्न बाध्य अवस्था रहेको छ । कक्षा १० को शैक्षिक प्रमाणपत्रलाई जीवनको एक महत्वपूर्ण शैक्षिक कोशेढुङ्गाका रूपमा लिइन्छ । यो प्रमाणपत्र सहितका कागजात नेपालमा उच्च शिक्षा हासिल गर्नका लागि महत्वपूर्ण मानिने कागजात पनि हो । कुनै रोजगारी तथा पेशामा संलग्न हुन पनि आधारभूत शैक्षिक उपाधीका रूपमा कक्षा १० लाई लिइन्छ । त्यसैले ती कागजात पेश गरी सेवा लिनुपर्ने सबै स्थानहरूमा मलाई अंकुश तथा बाधाको विद्यमानता छ ।

१०. <u>मूल निवेदन (रिट निवेदन) को मागदाबी अनुसार प्रकरण १० को (ङ) मागदाबी :</u> उल्लेखित मागदाबी यस रिट निवेदनको रोहमा निकै गम्भीर प्रश्न सन्निहित रहेको मागदाबी हो । एकातर्फ राष्ट्रिय परिक्षा बोर्डले मेरो कक्षा १० को शैक्षिक प्रमाणपत्रलाई संशोधन गर्न इन्कार गर्यो भने अर्को तर्फ सो प्रमाणपत्र संशोधन नभइकन विश्वविद्यालयले रजिष्ट्रेशन गर्नबाट इन्कार गर्यो । यसरी मलाई यी दुबै निकायहरूले चक्रव्युहमा फसाए । न मेरो एसएलसी तहका प्रमाणपत्रहरू संशोधन हुन्छन् न त ती प्रमाणपत्रहरू संशोधन बिना मेरो पढाईलाई निरन्तरता दिन सम्भव छ । नेपालको संविधानको प्रस्तावनामा सबै प्रकारका विभेद र उत्पीडनको अन्त्य गर्ने संकल्प गरिएको छ । तर मेरो हकमा झन राज्यको निकायले विभेदलाई निरन्तरता दिने कार्य गरेको छ । संविधानले नै लोकतान्त्रिक शासन प्रणाली, नागरिक स्वतन्त्रता, मौलिक अधिकार तथा मानव अधिकार प्रति प्रतिबद्ध रहने संकल्प गरेको छ । मेरो हकमा यी संवैधानिक प्रावधान प्रत्याभूती भएन । नेपालको संविधान धारा १२ बमोजिम लैङ्गिक पहिचान सहितको नेपालको नागरिकताको प्रमाणपत्र पाउन सक्नेछ भनि स्पष्ट व्यवस्था गरेको छ । नागरिकता प्रमाणपत्र जस्तो मूलभूत परिचयपत्र नै लैङ्गिक पहिचान अनुसार प्राप्त गर्न सकिने भएपछी शैक्षिक प्रमाणपत्रहरूमा

लैङ्गिक पहिचान कायम गर्न नमिल्ने हुँदैन । नेपालको संविधान धारा १६ ले सम्मानपूर्वक बाँच्न पाउने हक सुनिश्चित गरेको छ र प्रत्येक व्यक्तिलाई सम्मानपूर्वक बाँच्न पाउने हक हुनेछ भनि उल्लेख गरेको छ । आफ्नो पहिचान विपरीतको प्रमाणपत्रका साथ बाँच्नुपर्दा र चिनिनुपर्दा दिनहुँ व्यवहारिक समस्याहरूबाट गुज्रन बाध्य हुने, हिंसा तथा लाञ्छना लगायतका दुर्व्यवहार समेतको शिकार हुन बाध्य बनाउने वा उच्च जोखिममा धकेल्ने अवस्था छ । यसै अदालतले लैङ्गिक पहिचान सम्बन्धी यस अघिका फैसलाहरूमा प्रतिपादन गरेको नजीर सिद्धान्तहरूमा समेत आफ्नो वास्तविक पहिचानभन्दा फरक परिचय पत्रका साथ रहन पर्दा आत्मसम्मानमा चोट पुग्नुका साथै सामुदायिक अपनत्वलाई समेत कमजोर तुल्याउने हुन्छ भनि अङ्गिकार गरेको छ । (निर्णय नं. ९८७५, फैसला मिति : २०७३/१०/१०, साल : २०७४, महिना : पौस, अंक : ९) नेपालको संविधान धारा १७ ले स्वतन्त्रताको हक सुनिश्चित गरेको छ । आफ्नो लैङ्गिक पहिचान अनुसार परिचय कायम गरी निर्धक्क र निर्वाध रूपमा जीवनयापन गर्न पाउनु तथा आफ्नो लैङ्गिक पहिचान अनुसारकै नाम अङ्गिकार गरी मृतनाम र मृतलैङ्गिकताबाट सदाका लागि त्यसबाट मुक्ती पाउनु मेरो संविधान प्रदत्त स्वतन्त्रताको हक हो । तथापि परीक्षा बोर्डले मेरो प्रमाणपत्र सच्याउन इन्कार गरेको हुनाले सो मौलिक हकबाट वञ्चित भएको छु । त्यसै गरी आफूले रोजेको विषय पढ्न पाउनु र आफूले रोजेको पेशामा संलग्न हुनपाउनु पनि स्वतन्त्रताको हक अन्तर्गत नै पर्दछ । नेपालको संविधान २०७२ धारा १८ समानताको हक अन्तर्गत उप-धारा (१) मा सबै नागरिक कानूनको दृष्टिमा समान हुने एवं कसैलाई पनि कानूनको समान संरक्षणबाट वञ्चित गरिने छैन भन्ने उल्लेख गरिएको छ । उप-धारा २ मा सामान्य कानूनको प्रयोगमा लिंग वा यस्तै अन्य कुनै आधारमा भेदभाव गरिने छैन भन्ने उल्लेख छ । उप-धारा ३ मा "राज्यले नागरिकहरूका बीच लिंगवा यस्तै अन्य कुनै आधारमा भेदभाव गर्ने छैन भन्ने उल्लेख गरिएको छ । पारलैङ्गिक महिला भएकै आधारमा विभेद गरिनु संविधानतः निषेधित छ । त्यति मात्र होइन धारा १८ (३) को प्रतिबन्धात्मक वाक्य अनुसार लैङ्गिक तथा यौनिक अल्पसङ्ख्यक व्यक्तिहरूका लागि विशेष व्यवस्था गर्न समेत सक्ने अवस्थामा झन आधारभूत अधिकारकै प्रचलनबाट वञ्चित भएको अवस्था छ । नेपालको संविधान २०७२ धारा ३१ मा शिक्षाको हक सुनिश्चित गरिएको छ । मेरो एसएलसी प्रमाणपत्र संशोधन नहुँदा विश्वविद्यालय लगायतका सम्पूर्ण शैक्षिक कार्यक्रमहरूबाट भर्ना लिन इन्कारी हुँदा मेरो यस मौलिक हक माथी गम्भीर आघात

पुगेको छ । सबै परीक्षामा उत्तीर्ण भएतापनि शैक्षिक उपाधीको आधिकारिकता हासिल नहुनु शिक्षाको हकको हननका गम्बीर विषय हुन् । यी सबैको कारण परीक्षा बोर्डले मेरो शैक्षिक प्रमाणपत्र संशोधन गर्न इन्कार गर्नाले हो । नेपालको संविधान २०७२ धारा ३३ मा रोजगारीको हक सुनिश्चित गरिएको छ । आनुधिक युगमा शैक्षिक योग्यता र रोजगारीको तादाम्य सम्बन्ध छ । अहिले जुनसुकै पदमा जागिर खान कम्तिमा एसएलसी उत्तीर्ण भएको कागजात माग्छ । शैक्षिक क्षेत्रमा एसएलसी प्रमाणपत्रका कारण भोगेको समस्या रोजगारीको क्षेत्रमा पनि भोग्नुपरेको छ ।"

११. <u>**मूल निवेदन (रिट निवेदन) को मागदाबी अनुसार प्रकरण १० को (च) मागदाबी :**</u> उल्लेखित मागदाबी अनुसार मैले आफ्ना सम्पूर्ण वैयक्तिक कागजातहरूमा लैङ्गिक पहिचान कायम हुनुपर्ने माग राखेको छु । हामीलाई प्रत्येक दिन जीवनयापनका लागि प्रमाणपत्र तथा परिचयपत्रको आवश्यकता पर्दछ । कुनै चिठी पार्सल आयो भने त्यसलाई प्राप्त गर्न परिचयपत्र चाहिन्छ । कतै यात्रा गर्नका लागि हवाई टिकट वा बस टिकट काट्न र यात्रा गर्न परिचयपत्र देखाउनुपर्छ । थप शिक्षा प्राप्त गर्न तथा रोजगारीका लागि शैक्षिक प्रमाणपत्र देखाउनुपर्छ । कुनै होटेलमा बास बस्नुपर्दा परिचयपत्र देखाउनुपर्छ । बैंक खाता खोल्न नागरिकता प्रमाणपत्र आवश्यक छ । कुनै व्यापार व्यवसायका लागि नागरिकता प्रमाणपत्र आवश्यक पर्दछ । अतः हाम्रो जीवनको लगभग सबै आवश्यकता पूर्ती गर्न परिचयपत्र तथा प्रमाणपत्र आवश्यक छ । कतिपय कागजातहरूमा जन्मँदा इङ्गित गरिएको लैङ्गिकता उल्लेख भएको एवं कतिपय कागजातहरूमा आंशिक मात्र संशोधन भएको अवस्थाले मेरो सम्पूर्ण कागजातहरूमा एकरूपता कायम हुन सकेको छैन । नेपालको संविधान धारा १२ मा ***"वंशीय आधार तथा लैङ्गिक पहिचान सहितको नागरिकता : यो संविधान बमोजिम वंशजको आधारमा नेपालको नागरिकता प्राप्त गर्ने व्यक्तिले निजको आमा वा बाबुको नामबाट लैङ्गिक पहिचान सहितको नेपालको नागरिकताको प्रमाणपत्र पाउन सक्नेछ"*** भन्ने व्यवस्था गरिएको छ । अतः नेपालको संविधानले नागरिकता प्रमाणपत्र लैङ्गिक पहिचान बमोजिम हुने भन्ने सुनिश्चित गरेको छ । नागरिकता प्रमाणपत्र जस्तो राष्ट्रिय महत्वको परिचयपत्र लैङ्गिक पहिचान अनुसार हुने भएपछी अरू दस्तावेजहरू पनि स्वतः लैङ्गिक पहिचान अनुसार हुनुपर्ने नै भयो । नेपाल नागरिकता (पहिलो संशोधन) ऐन, २०७९ को दफा ६ ले मूल ऐनमा दफा ८क. थप गरेको छ । दफा ८क. को उपदफा

(३) मा *"यस ऐन बमोजिम दिइने नेपाली नागरिकताको प्रमाणपत्रमा तोकिए बमोजिम लैङ्गिक पहिचान समेत खुलाउनु पर्नेछ ।"* भन्ने उल्लेख गरिएको छ । अतः लैङ्गिक पहिचान अनुसारको नागरिकता प्राप्त गर्नु कानूनी हक पनि हो । नागरिकता प्रमाणपत्र जस्तो राष्ट्रिय महत्वको परिचयपत्र लैङ्गिक पहिचान अनुसार हुने भएपछी अरू दस्तावेजहरू पनि स्वतः लैङ्गिक पहिचान अनुसार हुनुपर्ने नै भयो । आफ्नो लैङ्गिक पहिचान महिला हुँदाहुँदै नागरिकता प्रमाणपत्र, शैक्षिक प्रमाणपत्र जस्ता वैयक्तिक कागजातहरूमा लैङ्गिक पहिचान विपरीतको परिचय जनिरहन बाध्य हुनाले मेरो सम्मानपूर्वक बाँच्न पाउने हकको हनन भएको छ । आफ्नो लैङ्गिक पहिचान विपरीतको कागजातपत्र बोक्न बाध्य रहँदा मेरो पहिचान परिचयमा अनावश्यक द्विविधा तथा जिज्ञासाको स्थिति उत्पन्न हुने गरेको छ । मैले पाइला-पाइलामा आफ्नो लैङ्गिक पहिचान बारे व्याख्या स्पष्टिकरण दिँदै हिंड्न बाध्य भएको छु । यसले मलाई समाजमा लैङ्गिक पहिचान अनुसार स्थापित हुनबाट पनि वञ्चित गराएको छ । यसले मेरो सामाजिक स्वीकार्यतामा समेत गम्भीर प्रतिकूल असर पुर्याएर मेरो आत्मसम्मानमा ठेस पुर्याएको छ । यसकारण अरू व्यक्तिहरूले मलाई महिलाका रूपमा नस्वीकार्ने, मेरो पहिचान माथी प्रश्न-प्रतिप्रश्न गर्ने, मेरो खिस्सी मजाक उडाउने जस्ता घटनाहरूको सामना गर्न बाध्य भएको छु । यसले मेरो मनोबललाई छियाछिया पारेको अवस्था छ । फलतः यसबाट धारा ३५ प्रदत्त स्वास्थ्यको हक पनि हनन भएको अवस्था छ । स्वस्थ रहनु भनेको शारीरिक रूपमा मात्र नभएर मानसिक, भावनात्मक र सामाजिक रूपमा स्वस्थ रहनु पनि हो । मैले आफ्नो जन्मँदा इङ्गित गरिएको लैङ्गिकता र सो अनुसार राखिदिएको नाम हटाएर लैङ्गिक पहिचान अनुसारको नाम तथा लैङ्गिक विवरण कायम गर्न नसक्नाले सृजना भएको समस्या बहुक्षेत्रीय छन् । यसले मेरो जीवनको कुनै एउटा पाटो मात्र नभएर मेरो सर्वत्र अस्तित्वमा नै प्रतिकूल असर पुर्याएको छ । यसकारण हुने chain of situations ले मलाई झन झनै परहेजपूर्ण अवस्थामा धकेल्दै गएको छु । हरेक ठाउँमा लैङ्गिक पहिचानकै कारणले ठोकर खानुपर्ने अवस्था छ । यो समस्याले शिक्षा, स्वास्थ्य, रोजगार गरी मेरो सम्पूर्ण जीवनायमहरूमा नै प्रतिकूल धक्का दिएको छ । यत्तिकै पनि हामी जस्ता व्यक्तिहरूलाई पहिचान खुलाएर आउनुमा ठूलो साहस पर्दछ । आफ्नो लैङ्गिक पहिचान अनुसार समाजमा स्थापित हुन पनि अनेकौं लडाइँ लड्नुपर्छ । तर यत्रो सहास र संघर्ष गरी आफ्नो लैङ्गिक पहिचान अनुसार जीवनयापन गर्न थालिसकेपछी पनि राज्यबाट कागजप्रमाण भने संशोधन नहुनाले मेरो जीवन नै अंकुशपूर्ण र दोहोरो बनाइएको छ ।

प्रत्येक दिन हुने हीनताबोध र अपमानबोधले मलाई जीवन पर्यन्त मनोवैज्ञानिक असर पारेको छ, पीडा दिएको छ । परिचयपत्रकै कारण प्रत्येक दिन भोग्नुपर्ने बिचल्लीपना र पीडाबोध उक्त भोगाई हुने म हामी बाहेक अरूले कल्पना पनि गर्न सक्दैनन् होला । यसले मेरो आत्मविश्वास पनि ह्रास ल्याएको छ । यही पीडाको भार र आत्मविश्वासको अभावमा म बाँच्न बाध्य छु । यसले मेरो स्वतन्त्र विकास हुनबाट वञ्चित गरेको छ । मैले चाहेर पनि आफ्नो जीवनमा केही हासिल गर्न नसक्ने स्थिति निर्माण गरेको छ । यसकारण हामीहरू सबै क्षेत्रमा पछाडि पारिएका छौं र पर्न बाध्य छौं । यो समस्याको गाम्भीर्यतालाई मनन गर्नु अत्यावश्यक छ ।

१२. **मूल निवेदन (रिट निवेदन) को मागदाबी अनुसार प्रकरण १० को (छ) मागदाबी :** उल्लेखित मागदाबी नेपालको संविधान धारा २८ तथा १६ प्रदत्त मौलिक हकहरूको रोहमा महत्वपूर्ण विषय हुन् । कुनै पनि व्यक्तिको लैङ्गिक पहिचान पूर्णतः स्थापित हुनका लागि उसको मृतनाम तथा मृतलैङ्गिकता पनि पूर्णतः विस्थापित हुनै पर्छ । कुनै न कुनै स्थानमा कुनै न कुनै तवरमा व्यक्तिको मृतनाम तथा मृतलैङ्गिकताको अभिलेख रहिरहने हो भने त्यसले नीज व्यक्तिको लैङ्गिक पहिचान स्थापनामा प्रतिकूल प्रभाव छोड्छ । मेरो पनि एसएलसी प्रमाणपत्रमा मृतनाम तथा मृतलैङ्गिकता उल्लेख भएकै कारण मेरो लैङ्गिक पहिचान स्थापित हुन नसकेको हो । त्यति मात्र नभएर एसएलसी प्रमाणपत्र पेश गर्नुपर्ने हरेक स्थानमा नचाहँदा नचाहँदै पनि मृतनाम तथा मृतलैङ्गिकता खुलाउन बाध्य भइन्छ । मेरो मृतनाम मैले छनोट गरेको होइन । यो म शिशुअवस्थामा मलाई राखिदिएको हो । मैले जन्मन बित्तिकै मलाई "पुरुष"को उपमा देउ भनेको पनि होइन । यो समाजको मान्यतामा आधार भएर इङ्गित गरिएको थियो । मलाई "तिमी यो हो" भनेर हुर्काइएको तर आफ्नो स्वःअनुभूती त्यस विपरीत भएकै कारण अनेकौं प्रताडना, अन्तरद्वन्द र स्वःअन्वेषणबाट गुज्रन पर्यो । अन्ततः जब म आफ्नो लैङ्गिक पहिचान अनुसार खुलेर आएँ तब पनि मेरो पहिचान स्थापना गर्नबाट मलाई रोकिएको छ । मेरो आत्मनिर्णयको शक्ति नै नभएको उमेरमा अरूद्वारा गरिएको निर्णयसँग जीवनभर बाँधिन बाध्य बनाउनु मिल्दैन । विस्मृतिको अधिकार (Right to be forgotten) तथा विलोपनको अधिकार (Right to erasure) लाई गोपनीयताको हकका महत्वपूर्ण अङ्गको रूपमा लिइन्छ । तथ्याङ्क ऐन, २०७९ को दफा १२ (३) अनुसार तथ्याङ्क भण्डारण गर्दा तथ्याङ्कीय उद्देश्य प्राप्त भइसकेपछी

व्यक्तिगत पहिचान खुल्ने विवरण हटाउनुपर्ने प्रावधान छ । युरोपेली संघले सूचनाको गोपनीयता सम्बन्धी ल्याएको कानून General Data Protection Regulation (GDPR) को धारा १७ ले Right to erasure ('right to be forgotten') लाई महत्वपूर्ण कानूनी प्रावधानको रूपमा अँगालेको छ । त्यसै गरी मैले १६ वर्षकै उमेरमा नागरिकता प्राप्त गरेकै समयमा नाम परिवर्तन गरी नागरिकता प्रमाणपत्रमै लैङ्गिक पहिचान अनुसारको नाम प्राप्त गरिसकेको अवस्था छ । मेरो मृतनाम तथा मृतलैङ्गिकता अनुसार मेरो मूलभूत परिचयपत्र बनेको अवस्था पनि छैन । कक्षा १० सम्मको प्रमाणपत्रमा सीमित विवरण संशोधन पश्चात् कुनै औचित्यता रहँदैन । त्यस विवरण अभिलेखमा जनिरहनुपर्ने कुनै आधार कारण छैन । त्यसलाई अलंकारात्मक रूपमा जनाइराख्नुपर्ने अवस्था पनि छैन । मैले सामाजिक रूपमा १३/१४ वर्ष देखि तथा कानूनी कागजातमा १६ वर्षको उमेर देखि आफूलाई रुक्शना कपाली भन्दै चिनाइआएको छु र मेरो सार्वजनिक परिचय पनि यही अनुसार नै छ । मलाई मेरो मृतनाम देख्दा कुनै अपनत्व महसुस हुँदैन । त्यो नाम गरेको अर्कै व्यक्ति थियो होला जो अहिले अस्तित्वमा छैन । मेरो मृतनाम र मृतलैङ्गिकता मलाई जबर्जस्ती गलहती लगाउनु मिल्दैन, र जबसम्म यस कार्यको अन्त्य हुँदैन तब सम्म मेरो लैङ्गिक पहिचानको हक सहित गोपनीयता र आत्मसम्मानमा आघात पुगिरहन्छ । पहिचान कहिल्यै पनि लादिन सकिँदैन । पहिचानमा स्वयंको अपनत्व हुनुपर्छ । स्वयंको अपनत्व नै नभएको विवरण पहिचान हुँदैन । मैले आफूलाई समाजमा रुक्शना कपाली नाउँले महिला भनि स्थापित गरिसकेँ । मलाई मेरो मृतनामले चिन्ने कोही पनि व्यक्ति छैनन् । तसर्थ मेरो मृतनाम तथा मृतलैङ्गिकताको विषय नितान्त अनावश्यक अप्रयोजनीय भएको हुनाले तिनलाई मेटाउँदा कोही कसैलाई क्षती हुने अवस्था छैन भने नमेटिंदा मैले जीवन पर्यन्त अपनत्व नै नभएको परिचयसँग बाँधिएको अवस्थामा रहनुपर्ने हुन्छ ।

१३. <u>मूल निवेदन (रिट निवेदन) को मागदाबी अनुसार प्रकरण १० को (ज) मागदाबी :</u> उल्लेखित मागदाबीमा मैले उठाएको विषय त्यस्तो प्राविधिक विषय पनि होइन । यो व्यवहारिक विषय पनि हो । नेपाली समाजमा रहेबसेका सबैले बुझ्न सक्ने विषय हो । नेपाली समाज विविधतापूर्ण छ । यहाँ मानिसको नाम सम्बन्धीको परम्परा पनि विभिन्न छ । कतिपय समाजहरू, जस्तैः- हिमाली समाजहरूमा टासी, पेमा, निमा, इत्यादि जस्ता नामहरूमा लैङ्गिकता झल्कँदैन । तर पहाडी मधेसी समुदायमा प्रचलित नामले लैङ्गिकताको

प्रतिबिम्बन गर्छ । कसैको नाम राम, स्याम, हरि छ भने उसलाई समाजले पुरुष भनेर चिन्छ भने कसैको नाम सीता, गीता, रीता छ भने उसलाई समाजले महिला भनेर चिन्छ। यो व्यवहारिक कुरा हो । हाम्रो समाजमा महिलाको नाम रमेश, सुरेश, दिनेश त राखिँदैन । समाजले नै नामलाई महिला र पुरुषको भेदमा छुट्याएको छ भने त्यही समाजमा बस्ने मैले आफ्नो लैङ्गिक पहिचान अनुसार महिला जनाउने नाम रोज्यो भनेर आपत्ती जनाउनु र बाधा पुर्याउनु दोहोरोपना र पारलैङ्गिक व्यक्तिहरू प्रति अपहेलनाको पराकाष्ठा हो । त्यसैले पुरुषजन्य नाम भिर्न बाध्य बनाउनु भनेको लैङ्गिक पहिचान कायम गर्नबाट वञ्चित गराउनु हो । त्यसै गरी मैले आफ्नो लैङ्गिक पहिचान अनुसारको परिचय प्राप्त गर्न नसकेको अवस्थामा मलाई वडा कार्यालयले दुई नाम गरेको व्यक्ति एकै हो भन्ने सिफारिस गरिदिएको सान्दर्भिक थियो । तर मलाई त्यसरी दुई नामहरूबाट चिनिने इच्छा नै थिएन । मैले आफ्नो पहिचान खुलाउन अगाडीका कागजातहरू संशोधन नहुँदा प्राविधिकताको प्रयोजनका लागि मात्र त्यस्तो सिफारिस लिन बाध्य भएको हो । त्यसरी मेरो दुई नाम कायम रहिरहने हो भने मेरो सामाजिक स्वीकार्यता लगायत लैङ्गिक पहिचानको विषयमा द्विविधा सृजना हुने अवस्था रहन्छ । यसकारण मेरो परिचयमा पनि एकरूपता कायम हुन सक्दैन । आफ्नो पहिचानमा स्वःविश्वस्त नहुँदा गुज्रनुपरेको पीडा र उत्पीडनमा फर्कन मलाई बाध्य पार्नु मिल्दैन । तसर्थ अग्रगमनको लागि मेरो लैङ्गिक पहिचानमा निर्धक्क र निर्वाध जीवनयापन गर्ने वातावरणका लागि मेरो मृतनाम र मृतलैङ्गिकताबाट मेरो सम्बन्ध विच्छेदलाई अनुमोदन गर्नुपर्छ ।

१४. **मूल निवेदन (रिट निवेदन) को मागदाबी अनुसार प्रकरण १० को (झ) मागदाबी :** यस निवेदनको प्रकरण ६ मा उल्लेख व्याख्या गरिएझैं नेपालको संविधान धारा २८ तथा वैयक्तिक गोपनीयता सम्बन्धी ऐन, २०७५ को दफा ३ (३) तथा ११ (१) (२) बमोजिम प्रदत्त संवैधानिक तथा कानूनी हक रहेको छ ।

१५. **थप मागदाबी :**

(क) कानूनको खाडललाई अस्थायी रूपमा पूर्ति गर्ने निर्देशिका नै जारी गर्दै आएको न्यायिक परम्परा समेत रहेको सन्दर्भलाई पुनःस्मरण गराउँदै सरकारी निकायबाट स्पष्ट कार्यविधी

नबनेको खण्डमा कार्यविधिको असुविधा देखाई मलाई मेरो संवैधानिक हक अधिकारको प्रचलन गर्न गराउनबाट बाधा अवरोध हुन / गर्न सक्ने सम्भावना रहेकाले मूल निवेदनको मागदाबी अनुसार मेरो लैङ्गिक पहिचान अनुसारकै नाम तथा लैङ्गिक विवरण कायम गर्न गराउनका लागि देहायको कार्यविधी तोकिपाऊँ ।

१. ललितपुर महानगरपालिका, नगर कार्यपालिकाको कार्यालय स्थित पञ्जिकरण विभागमा निवेदकले निवेदन पेश गरेपछी सम्बन्धित अधिकारीले निवेदकको जन्मदर्ता प्रमाणपत्रको अभिलेखमा लैङ्गिक विवरण सच्याएर "महिला" कायम गर्नू ।

२. जन्मदर्ता प्रमाणपत्रको अभिलेख संशोधन भएको निस्सा सहित ललितपुर महानगरपालिका, वडा नं १६ को कार्यालयमा निवेदकले निवेदन पेश गरेपछी हालको जन्मदर्ता प्रमाणपत्रको सक्कलै प्रति खिची सम्बन्धित अधिकारीले संशोधित अभिलेख अनुसार जन्मदर्ता प्रमाणपत्रको अर्को प्रति प्रदान गर्नू ।

३. जन्मदर्ता प्रमाणपत्र संशोधन भएको निस्सा सहित इडेन गार्डेन आवसीय माध्यमिक विद्यालयमा निवेदकले निवेदन पेश गरेपछी विद्यालयको अभिलेखमा नाम सच्याएर "रुक्शना कपाली" एवं लैङ्गिक विवरण सच्याएर "महिला" कायम गर्नू ।

४. जन्मदर्ता प्रमाणपत्र तथा विद्यालयको अभिलेख संशोधन भएको निस्सा सहित जिल्ला शिक्षा विकास तथा समन्वय इकाइ ललितपुरमा निवेदकले निवेदन पेश गरेपछी हालको कक्षा ८ (डि.एल.ई) को शैक्षिक प्रमाणपत्रको सक्क्लै प्रति खिची सम्बन्धित अधिकारीले संशोधित अभिलेख अनुसार लैङ्गिक विवरण "महिला" कायम गरी आफ्नो अभिलेखमा समेत संशोधन गरी कक्षा ८ (डि.एल.ई) को शैक्षिक प्रमाणपत्रको अर्को प्रति प्रदान गर्नू ।

५. जन्मदर्ता प्रमाणपत्र, विद्यालयको अभिलेख तथा कक्षा ८ को शैक्षिक प्रमाणपत्र संशोधन भएको निस्सा सहित राष्ट्रिय परीक्षा बोर्डमा निवेदकले निवेदन पेश गरेपछी हालको कक्षा १० (एस.एल.सी) को शैक्षिक प्रमाणपत्रको सक्क्लै प्रति खिची सम्बन्धित अधिकारीले संशोधित अभिलेख अनुसार नाम "रुक्शना कपाली" एवं लैङ्गिक विवरण "महिला" कायम गरी आफ्नो अभिलेखमा समेत संशोधन गरी कक्षा १० (एस.एल.सी) को शैक्षिक प्रमाणपत्रको अर्को प्रति प्रदान गर्नू ।

६. राष्ट्रिय परीक्षा बोर्डबाट कक्षा १० (एस.एल.सी) को शैक्षिक प्रमाणपत्र संशोधन भएको निस्सा सहित इडेन गार्डेन आवसीय माध्यमिक विद्यालयमा निवेदकले निवेदन

पेश गरेपछी विद्यालयले हालको चारित्रिक प्रमाणपत्रको सक्कलै प्रति खिची संशोधित प्रमाणपत्र अनुसार नाम "रुक्शना कपाली" एवं लैङ्गिक विवरण "महिला" कायम गरी चारित्रिक प्रमाणपत्रको अर्को प्रति प्रदान गर्नू ।

७. जन्मदर्ता प्रमाणपत्र तथा शैक्षिक प्रमाणपत्र संशोधन भएको निस्सा सहित ललितपुर महानगरपालिका, वडा नं १६ को कार्यालयमा निवेदकले निवेदन पेश गरेपछी नागरिकता प्रमाणपत्रमा लैङ्गिक विवरण सच्याएर "महिला" कायम गर्न वडा कार्यालयले जिल्ला प्रशासन कार्यालय ललितपुरलाई सिफारिस प्रदान गर्नू ।

८. जन्मदर्ता प्रमाणपत्र तथा शैक्षिक प्रमाणपत्र संशोधन भएको निस्सा साथै वडा कार्यालयको सिफारिस सहित जिल्ला प्रशासन कार्यालय ललितपुरमा निवेदकले निवेदन पेश गरेपछी हालको नागरिकता प्रमाणपत्रको सक्कलै प्रति खिची लैङ्गिक विवरण "महिला" कायम गरी आफ्नो अभिलेखमा समेत संशोधन गरी नागरिकता प्रमाणपत्रको अर्को प्रति प्रदान गर्नू ।

९. प्रत्यर्थी लगायत सम्बन्धित जोकसैले आफ्ना अभिलेखमा रहेका कागजातहरूमा निवेदकको लैङ्गिक पहिचान विपरीतको मृतनाम तथा मृतलैङ्गिकता खुलेको रहेछ भने सो कागजातलाई अभिलेखबाट झिकी धुल्याउनू तथा संशोधित कागजातबाट प्रतिस्थापन गर्नू । ढड्डामा टिपोट उल्लेख भएको भए सो टिपोट उल्लेखलाई ढड्डाबाट मेटाई संशोधित विवरणले प्रतिस्थापन गर्नू । त्यसरी धुल्याउन नमिल्ने प्रकृतिको कागजात रहेछ भने निवेदकको लैङ्गिक पहिचान विपरीतको मृतनाम तथा मृतलैङ्गिकताको व्यहोरालाई नदेखिने गरी छोप्नु मेटाउनू ।

(ख) २०७४ सालमा प्रत्यर्थी त्रिभुवन विश्वविद्यालयको आङ्गिक क्याम्पस त्रि-चन्द्र बहुमुखी क्याम्पस, जमल, काठमाडौंमा ३ वर्षे बि.ए. मा भर्ना भए बमोजिम निवेदकको लैङ्गिक पहिचान अनुसारकै नाम "रुक्शना कपाली" तथा लैङ्गिक विवरण "महिला" सहित रजिष्ट्रेशन गरी गराई निवेदकले पूरा गरेको शैक्षिक उपाधी निवेदकलाई हासिल प्राप्त हुने गरी प्रदान गर्नू गराउनू भनि प्रत्यर्थी त्रिभुवन विश्वविद्यालय, परीक्षा नियन्त्रण कार्यालय, बल्खु, काठमाडौं एवं प्रत्यर्थी त्रिभुवन विश्वविद्यालय, उपकुलपतीको कार्यालय, कीर्तिपुरको नाउँमा परमादेश लगायत अन्य उपयुक्त आदेश जारी गरिपाऊँ ।

(ग) राहदानीको हकमा पहिलो तथा तेस्रो राहदानीमा लैङ्गिक पहिचान अनुसारको लैङ्गिक विवरण "महिला" नै कायम भएको तर दोस्रो राहदानीमा लैङ्गिक विवरण "अन्य" कायम भएको हुनाले अन्तर्राष्ट्रिय यात्रा गर्दा सफ्टवेयर लगायतको विद्युतीय अभिलेखमा अमेल देखिन सक्ने भएकाले विद्युतीय अभिलेखमा दोस्रो राहदानीको लैङ्गिक विवरण पनि "महिला" कायम गरी राहदानीको भौतिक प्रतिमा पनि सो व्यहोरा जनाउन प्रत्यर्थी राहदानी विभागको नाउँमा परमादेश लगायत अन्य उपयुक्त आदेश जारी गरिपाऊँ ।

(घ) यस रिट निवेदनमा प्रत्यर्थी इडेन गार्डेन आवसीय माध्यमिक विद्यालयले फिराएको लिखित जवाफमा मेरो मृतनाम (Deadname) उल्लेख उद्घोषण भएको देखिन्छ । नीज प्रत्यर्थीले पेश गरेको विद्यालय व्यवस्थापन समितिको बैठकको निर्णय कागजातमा पनि मलाई मृतनामले नै सम्बोधन गरेको छ । जवाफ साथ संलग्न कागजातहरूमा पनि मैले लैङ्गिक पहिचान अनुसार खुलेर आउन पूर्वका विवरणहरू देखिन्छन् । नेपालको संविधान धारा २८ एवं वैयक्तिक गोपनीयता सम्बन्धी ऐन, २०७५ को दफा ३ (३) तथा ११ (१) (२) बमोजिम ती कागजातहरूलाई मिसिलमा खामबन्दी सिलबन्दी गरी संगलन गर्न गराउन यस अदालतको रजिष्ट्रारको नाउँमा आवश्यक उपयुक्त आदेश जारी गरिपाऊँ ।

(ङ) यस अदालतबाट यस रिट निवेदनको रोहमा जारी हुने आदेश, फैसला साथै अनलाइनमा अपलोड हुने लगायत सार्वजनिक हुने कुनै प्रकृतिको लिखतहरूमा मेरो मृतनामलाई उल्लेख उद्घोषण नगरी नगराई नेपालको संविधान धारा २८ एवं वैयक्तिक गोपनीयता सम्बन्धी ऐन, २०७५ को दफा ३ (३) तथा ११ (१) (२) बमोजिम गोपनीयताको सुनिश्चितता पाऊँ ।

१६. यस रिट निवेदनको रोहमा विषयवस्तुको विज्ञता भएका व्यक्ति तथा संगठनहरूद्वारा प्रदान गरिएका निम्नानुसार कागजात दस्तावेज पनि प्रमाणका रूपमा सामेल गरिपाऊँ ।

(क) एशिया प्रशान्त पारलैङ्गिक सञ्जाल (Asia Pacific Transgender Network) को सन् २०२२ जुलाई ४ मिति उल्लेख भएको पत्र सहित पेश भएको विज्ञ राय दस्तावेज - पाना ५ ।

(ख) ह्युमन राइट्स वाच (Human Rights Watch) को सन् २०२२ मे ५ मिति उल्लेख भएको पत्र सहित पेश भएको विज्ञ राय दस्तावेज - पाना ९ ।

(ग) उत्तर क्यारिलोना विश्वविद्यालय कानून संकाय (University of North Carolina School of Law) मा कार्यरत दुई प्राध्यापक Holning Lau तथा Mara Malagodi को सन् २०२३ नोभेम्बर ४ मिति उल्लेख भएको पत्र सहित पेश भएको विज्ञ राय दस्तावेज - पाना ३० ।

(घ) प्राइभेसी इन्टरनेशनल (Privacy International) को सन् २०२२ जून ३० मिति उल्लेख भएको पत्र सहित पेश भएको विज्ञ राय दस्तावेज - पाना १४ ।

(ङ) पारलैङ्गिक स्वास्थ्यका लागि पारलैङ्गिक व्यवसायिकहरूको संगठन (Transgender Professional Association for Transgender Health) को सन् २०२२ ज्यानुवरी ११ मिति उल्लेख भएको पत्र सहित पेश भएको विज्ञ राय दस्तावेज - पाना १३ ।

१७. सन् २०२२ जून १० मा दस्तावेज नं AL NPL 4/2022 रहेको पत्रबाट संयुक्त राष्ट्र संघले यस विषयमा चासो देखाई नेपाल सरकारलाई पत्र काटेको छ । उक्त पत्रको अनुसूचीमा अन्तर्राष्ट्रिय मानव अधिकार कानूनको सन्दर्भलाई समावेश गरिएको छ । उक्त पत्र (पाना ६) लाई पनि प्रमाणका रूपमा सामेल गरिपाऊँ ।

१८. मूल निवेदनको प्रकरण १४ (घ) मा सूचिकृत दस्तावेज अतिरिक्त संयुक्त राष्ट्र संघबाट जारी भएका देहायका कागजातलाई पनि प्रमाणका रूपमा समेल गरिपाऊँ ।

(क) Protection against violence and discrimination based on sexual orientation and gender identity (A/78/227).
https://documents-dds-ny.un.org/doc/UNDOC/GEN/N23/218/47/PDF/N2321847.pdf

(ख) Protection against violence and discrimination based on sexual orientation and gender identity (A/77/235).
https://documents-dds-ny.un.org/doc/UNDOC/GEN/N22/440/41/PDF/N2244041.pdf

(ग) Protection against violence and discrimination based on sexual orientation and gender identity (A/76/152).
https://documents-dds-ny.un.org/doc/UNDOC/GEN/N21/192/14/PDF/N2119214.pdf

(घ) Protection against violence and discrimination based on sexual orientation and gender identity (A/75/258).
https://documents-dds-ny.un.org/doc/UNDOC/GEN/N20/197/62/PDF/N2019762.pdf

(ङ) Report of the Independent Expert on protection against violence and discrimination based on sexual orientation and gender identity (A/HRC/53/37).
https://www.ohchr.org/en/documents/thematic-reports/ahrc5337-report-independent-expert-protection-against-violence-and

(च) Practices of so-called "conversion therapy" (A/HRC/44/53*).

https://documents-dds-ny.un.org/doc/UNDOC/GEN/G20/108/68/PDF/G2010868.pdf

(छ) The right to the enjoyment of the highest attainable standard of physical and mental health of persons, communities and populations affected by discrimination and violence based on sexual orientation and gender identity in relation to the Sustainable Development Goals (A/HRC/50/27).
https://documents-dds-ny.un.org/doc/UNDOC/GEN/G22/597/09/PDF/G2259709.pdf

(ज) The law of inclusion (A/HRC/47/27).
https://documents-dds-ny.un.org/doc/UNDOC/GEN/G21/123/16/PDF/G2112316.pdf

(झ) Born Free and Equal : Sexual Orientation, Gender Identity and Sex Characteristics in International Human Rights Law, Second Edition.
https://www.ohchr.org/sites/default/files/Documents/Publications/Born_Free_and_Equal_WEB.pdf

१९. लेखिएको बेहोरा ठिक साँचो हो फरक ठहरे कानून बमोजिम सहुँला बुझाउँला ।

निवेदक
निज रुक्शना कपाली

नेपाल संवत् ११४४ साल कछला महिना १७ गते ।
इति संवत् २०८० साल कार्तिक महिना १९ गते रोज १ शुभम् ............................ ।